# जीवनाशक विषादी ऐन, २०४८

लालमोहर र प्रकाशन मिति

२०४८।२।२१

संशोधन गर्ने ऐन

गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ २०६६।१०।७

## २०४८ सालको ऐन नं. ११

## जीवनाशक विषादी सम्बन्धी व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना** : विभिन्न बीउ, विरुवा, रुख, पशु, पंक्षी आदिमा लाग्ने घातक किटाणुहरु नाश गर्न प्रयोग गरिने जीवनाशक विषादीको आयात, निर्यात, उत्पादन, किनबेच तथा प्रयोग सम्बन्धी व्यवस्था गर्न वान्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवबाट नेपाल अधिराज्यको संविधान, २०४७ को धारा १२९ बमोजिम मन्त्रिपरिषदको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेको छ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम "जीवनाशक विषादी ऐन, २०४८" रहेको छ ।

(२) यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी तोकिदिएको क्षेत्रमा तोकिदिएको मिति देखि प्रारम्भ हुनेछ ।✒

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "विषादी" भन्नाले बीउ, विरुवा, रुख, पशु, पंछी आदिमा लाग्ने घातक किटाणुहरु नाश गर्न प्रयोग गरिने जीवनाशक विषादी (पेस्टीसाइड्स) सम्झनु पर्छ ।

(ख) "समिति" भन्नाले दफा ३ बमोजिम गठित विषादी समिति सम्झनु पर्छ ।

(ग) "सूचित विषादी" भन्नाले दफा १० बमोजिम नेपाल सरकारले सूचित आदेशद्वारा तोकेको विषादी सम्झनु पर्छ ।

(घ) "तोकिएको" वा "तोकिए बमोजिम" भन्नाले यस ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिए बमोजिम सम्झनु पर्छ ।

✒ यो ऐन मिति २०५१।४।१ देखि लागू हुने गरी तोकिएको । (नेपाल राजपत्र मिति २०५०।१०।२५) ।

३. **विषादी समितिको गठन** : (१) विषादी सम्बन्धी राष्ट्रिय नीति निर्धारण गर्ने विषयमा नेपाल सरकारलाई आवश्यक परामर्श दिन र विषादी सम्बन्धी राष्ट्रिय नीति कार्यान्वयन गर्न एक विषादी समितिको गठन हुनेछ ।

(२) समितिमा देहायका सदस्यहरु रहनेछन् :-

| | | | |
|---|---|---|---|
| (क) | सचिव, कृषि मन्त्रालय | - | अध्यक्ष |
| (ख) | प्रमुख, केन्द्रीय कीट बिज्ञान महाशाखा | - | सदस्य |
| (ग) | प्रमुख, केन्द्रीय वाली रोग विज्ञान महाशाखा | - | सदस्य |
| (घ) | प्रमुख, औलो उन्मूलन आयोजना | - | सदस्य |
| (ङ) | प्रतिनिधि, नेपाल गुणस्तर कार्यालय | - | सदस्य |
| (च) | प्रतिनिधि, खाद्यान्न बाली तथा मत्स्य विकास विभाग, बाली संरक्षण शाखा | - | सदस्य |
| (छ) | नेपाल सरकारद्वारा मनोनीत कृषि, पशु र वन विज्ञानसंग सम्बन्धित वैज्ञानिक तीनजना | - | सदस्य |
| (ज) | नेपाल सरकारद्वारा मनोनीत विषादी उद्यमी एकजना र उपभोक्ता कृषक एकजना | - | सदस्य |
| (झ) | नेपाल सरकारले तोकेको व्यक्ति | - | सदस्य-सचिव |

(३) उपदफा (२) को खण्ड (छ) र (ज) बमोजिम नेपाल सरकारद्वारा मनोनीत सदस्यहरुको पदावधि दुई वर्षको हुनेछ र पदावधि समाप्त भएपछि निजहरु पुनः मनोनीत हुन सक्नेछन् ।

(४) उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भएतापनि उपदफा (२) को खण्ड (छ) र (ज) बमोजिम नेपाल सरकारद्वारा मनोनीत सदस्यलाई निजको पदावधि पूरा नहुँदै नेपाल सरकारले हटाउन सक्नेछ ।

(५) नेपाल सरकारले आवश्यक देखेमा नेपाल राजपत्रमा सूचना प्रकाशित गरी समितिका सदस्यहरुमा आवश्यक थपघट वा हेरफेर गर्न सक्नेछ ।

(६) समितिले आवश्यक देखेमा कुनै स्वदेशी वा विदेशी विशेषज्ञ वा सल्लाहकारलाई समितिको बैठकमा पर्यवेक्षकको रुपमा आमन्त्रण गर्न सक्नेछ ।

४. **समितिको बैठक र निर्णय** : (१) समितिको बैठक अध्यक्षले तोकेको मिति, समय र स्थानमा बस्नेछ ।

(२) समितिको कूल सदस्य संख्याको पचास प्रतिशत सदस्यहरु उपस्थित भएमा बैठकको लागि गणपुरक संख्या पुगेको मानिनेछ ।

(३) समितिको बैठकको अध्यक्षता अध्यक्षले गर्नेछ र निजको अनुपस्थितिमा बैठकमा उपस्थित सदस्यहरुले आफू मध्येबाट छानेको सदस्यले गर्नेछ ।

(४) समितिको बैठकमा बहुमतको राय मान्य हुनेछ र मत बराबर भएमा अध्यक्षले निर्णयात्मक मत दिनेछ ।

(५) समितिको निर्णय सदस्य-सचिवद्वारा प्रमाणित गरिनेछ ।

(६) समितिको बैठक सम्बन्धी अन्य कार्यविधि समिति आफैंले निर्धारण गरे बमोजिम हुनेछ ।

५. **समितिको काम, कर्तव्य र अधिकार** : समितिको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) विषादी सम्बन्धी राष्ट्रिय नीति तर्जुमा गर्न नेपाल सरकारलाई परामर्श दिने ।

(ख) विषादी उत्पादन तथा वितरण कार्यमा निजी तथा सरकारी क्षेत्र बीच समन्वय कायम गर्ने ।

(ग) विषादी उद्योगमा लगानी गर्न निजी क्षेत्रलाई प्रोत्साहन गर्ने ।

(घ) निजी वा सरकारी क्षेत्रमा संचालित विषादी उद्योगहरुबाट उत्पादन हुने विषादीको गुणस्तर नियमित वा नियन्त्रित गर्ने गराउने ।

(ङ) विषादीको गुणस्तर निर्धारण गर्ने ।

६. **उपसमितिहरु गठन गर्न सक्ने** : (१) विषादीको आयात, निर्यात, उत्पादन तथा बिक्री वितरण गर्ने कार्यलाई सुचारु रुपले संचालन गर्नको लागि समितिले आवश्यकता अनुसार विभिन्न उपसमितिहरु गठन गर्न सक्नेछ ।

(२) उपसमितिहरुको काम, कर्तव्य र अधिकार तथा बैठक सम्बन्धी कार्यविधि तोकिए बमोजिम हुनेछ ।

७. **विषादी पंजीकरण (दर्ता) गर्ने निकायको स्थापना** : विषादी पंजीकरण सम्बन्धी कार्य गर्नको लागि नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशित गरी एउटा विषादी पंजीकरण निकायको स्थापना गर्न सक्नेछ ।

८. **विषादी पंजीकरण गर्ने निकायको काम, कर्तव्य र अधिकार** : (१) विषादी पंजीकरण गर्ने निकायको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ :-

(क) विषादी पंजीकरण गर्नको लागि प्राप्त हुन आएका निवेदनहरु उपर छानबीन गरी उपयुक्त ठहरिएका विषादीको पंजीकरण गर्ने र प्रमाणपत्र दिने ।

(ख) विषादीको सक्षम, विवेकपूर्ण र उचित प्रयोगको लागि पूर्वाधार तयार गर्ने ।

(२) विषादी पंजीकरण गर्ने निकायको अन्य काम, कर्तव्य र अधिकार र विषादी पंजीकरण गर्दा अपनाउनु पर्ने कार्यविधि तोकिए बमोजिम हुनेछ ।

९. **विषादी पंजीकरण गराई प्रमाण पत्र लिनु पर्ने** : कुनै पनि व्यक्ति संस्था वा निकायले आयात, निर्यात, उत्पादन प्रयोग वा किनबेच गर्ने विषादी सो कार्य गर्नु अघि अनिवार्य रुपमा दफा ७ बमोजिम स्थापना भएको निकायमा तोकिएको दस्तुर तिरी पंजीकरण गराई प्रमाणपत्र लिनु पर्नेछ ।

१०. **सूचित विषादी** : दफा ९ बमोजिम पंजीकरण भएका विषादीको नाम समितिको सिफारिसमा नेपाल सरकारले नेपाल राजपत्रमा प्रकाशित गर्नेछ ।

११. **सूचित विषादी बाहेक अन्य विषादीको प्रयोग गर्न नहुने** : नेपाल सरकारले दफा १० बमोजिम सूचित गरेको विषादी बाहेक अन्य विषादी आयात, निर्यात, उत्पादन, प्रयोग वा किनबेच गर्न पाइने छैन ।

१२. **इजाजतपत्र लिनु पर्ने** : सूचित विषादीको संश्लेषण (फर्मुलेसन), बिक्री वितरण वा व्यावसायिक रुपमा प्रयोग गर्ने व्यक्तिले तोकिएको दस्तुर तिरी समितिबाट इजाजतपत्र लिनु पर्नेछ ।

१३. **विषादी निरीक्षकको नियुक्ति** : यस ऐनको प्रयोजनको लागि नेपाल सरकारले आवश्यकता अनुसार विषादी निरीक्षकहरु नियुक्त गर्न सक्नेछ । त्यसरी विषादी निरीक्षक नियुक्त नभएको अवस्थामा त्यस्ता निरीक्षकको काम गर्न नेपाल सरकारले अन्य कुनै कर्मचारीलाई तोक्न सक्नेछ ।

१४. **विषादी निरीक्षकको काम, कर्तव्य र अधिकार** : विषादी निरीक्षकको काम, कर्तव्य र अधिकार तोकिए बमोजिम हुनेछ ।

१५. **दण्ड सजाय** : (१) दफा ९ उल्लघंन गर्ने व्यक्तिलाई दुई हजार रुपैयाँसम्म जरिवाना हुनेछ र त्यस्तो विषादी समेत जफत हुनेछ ।

(२) दफा ११ वा १२ उल्लंघन गर्ने व्यक्तिलाई पाँचहजार रुपैयाँसम्म जरिवाना हुनेछ र त्यस्तो विषादी समेत जफत हुनेछ ।

(३) माथि उपदफा (१) र (२) मा लेखिए देखि बाहेक यो ऐन र यस ऐन अन्तर्गत बनेको नियमावलीको विपरीत कुनै काम कारबाही गर्ने गराउने व्यक्तिलाई एकहजार रुपैयाँसम्म जरिवाना हुनेछ ।

१६. **सरकारवादी हुने** : यस ऐन अन्तर्गतको मुद्दा नेपाल सरकारवादी हुनेछ ।

१७. **मुद्दाको तहकीकात र दायरी** : (१) यस ऐन बमोजिम सजाय हुने कसूर सम्बन्धी मुद्दाको तहकीकात विषादी निरीक्षकले गर्नेछ र त्यस्तो तहकीकातको काम पूरा भएपछि मुद्दा हेर्ने अधिकारी समक्ष मुद्दा दायर गर्नेछ ।

(२) उपदफा (१) बमोजिम मुद्दा तहकीकात र दायर गर्दा विषादी निरीक्षकले सरकारी वकीलको राय लिन सक्नेछ ।

१८. **नियम बनाउने अधिकार** : यस ऐनको उद्देश्य कार्यान्वयन गर्नका लागि नेपाल सरकारले आवश्यक नियमहरु बनाउन सक्नेछ ।

---

**द्रष्टव्य** :

१. केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-
"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।

२. गणतन्त्र सुदृढीकरण तथा केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६६ द्वारा "श्री ५ को प्रशस्ति" र "अधिराज्य" भन्ने शव्दहरु झिकिएका छन् ।